# जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति



## परिचय

# जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति
# (The Root and Locus Movement)

विज्ञानको बुद्धि प्रविधिको प्रगति ।
धर्मको विवेक सहृदयताको सम्बन्ध ॥
विकास न्याय स्वाधीनता समृद्धिमा नेपालको ।
सहृदयी तराइ मधेश पहाड र हिमालको ॥

**वेबसाइट** : jarokilo.org
adhikary.wordpress.com
**फेसबुक** : https://www.facebook.com/rootandlocus/
**ट्वीटर** : https://twitter.com/JaroKilo
**फोन सम्पर्क** : ९८४१३१९२९१, ९८४१४८२९१७, ९८४१७९५०७३,
९८५१०१४५५३, ९८५१११११२७८, ९८४२३१४०६५,
९८०८९१९१४४, ९८०७०४१०४९

# शब्दार्थ

## जरो, किलो, मौलिक, रैथाने, शक्ति

### १. सामान्य अर्थ

१.१. **जरो** **(Root)**

| स्रोत कोश | शब्दार्थ |
|---|---|
| नेपाली बृहत् शब्दकोश | सम्पूर्ण बोटबिरुवा आदिको माटामुनि पसेर भोजन लिने अवयव; कन्द; जड; मूल । |
| नेपाली शब्दसागर | बोटबिरुवाले माटोभित्रबाट आहारा खिच्ने अंग, मूल, कन्द, जड, जरा ।<br>**जरो गाड्नु**– राम्ररी अड्न सक्ने बन्नु, दिगो राख्नु । |
| राष्ट्रिय नेपाली शब्दकोश | रुख आदिको जमीनभित्रको भाग ।<br>**जरो गाड्नु/जरो हाल्नु**–एकै ठाउँमा बस्नु ।<br>धेरै वर्ष टिक्नु । |

१.२. **किलो/कीलो** (Locus)

| स्रोत कोश | शब्दार्थ |
|---|---|
| नेपाली बृहत् शब्दकोश | १. कुर्सी, टेबुल आदि बनाउँदा काठका टुक्रालाई हतौडीले हानेर जोड्न वा भित्ता आदिमा |

| | |
|---|---|
| | कुनै वस्तु झुन्ड्याउन खुटीका रूपमा समेत प्रयोग गरिने, एक छेउ मोडिएको र अर्को छेउ तिखारिएको, फलाम, काठ आदिको लाम्चो काँटा ।<br>२. सुइरो ।<br>३. जमिन, भित्ता आदिमा ठोकेर वा गाडेर बस्तुभाउ बाँधिने काठ, फलाम आदिको लाम्चो टुक्रो । |
| नेपाली शब्दसागर | काठ-बाँस-फलामका तीखा लाम्चा काँटा वा सुइरा, सुइरो, खुँटी । |
| राष्ट्रिय नेपाली शब्दकोश | कहीँ गाड्न वा ठोक्नाका निमित्तको, एकातिर तीखो टुप्पो भएको फलाम, काठ आदिको लाम्चो काँटा । जमीनमा गाड्नका निम्तिको काठ, बाँस आदिको सुइरे टुक्रो ।<br>**कीलो गाड्नु** – दीगो भएर बस्नु; अडिनु; स्थायी हुनु । चिनो लाउनु; सीमाना लाउनु । |

## १.३. **मौलिक** (Original/Fundamental)

| स्रोत कोश | शब्दार्थ |
|---|---|
| नेपाली बृहत् शब्दकोश | १. मूल वा जडसित सम्बन्धित; मूलभूत ।<br>२. कसैको आधार नलिएको; नवीन वा सृजनात्मक । |
| नेपाली शब्दसागर | मूल वा जरासित सम्बन्धित, मूलभूत; मुख्य, प्रधान; अर्काको आधार नलिइएको, नवीन । |
| राष्ट्रिय नेपाली शब्दकोश | मूलसम्बन्धी । मूल तत्त्व वा सिद्धान्तसित सम्बन्ध भएको । (फण्डामेण्टल) ।<br>कसैको आधार, अनुवाद, नक्कल आदि केही नभएको (विचार, लेख आदि) । स्वोपज्ञ । (ओरिजिनल) । |

## १.४. **रैथाने** (Indigenous/Preeminent)

| स्रोत कोश | शब्दार्थ |
|---|---|
| नेपाली बृहत् शब्दकोश | १. कुनै ठाउँको पहिलेदेखिको वा पुरानो बासिन्दा; आदिवासी ।<br>२. ठालु, श्रेष्ठ ।<br>३. स्थानपति; क्षेत्रपाल । |
| नेपाली शब्दसागर | रैथानी – बासिन्दा भइसकेको मान्छे, अधिवासी, निवासी; सेठ, ठालू । क्षेत्रपाल, स्थानपति । |
| राष्ट्रिय नेपाली शब्दकोश | कुनै ठाउँको पुरानो बासिन्दा; अधिवासी । त्यही ठाउँको ठालू; श्रेष्ठ । स्थानपति, क्षेत्रपाल । |

## १.५. **शक्ति**

| स्रोत कोश | शब्दार्थ |
|---|---|
| नेपाली बृहत् शब्दकोश | १. तन, मन वा धनका रूपमा रहने सामर्थ्य; जोड; बल; तागत; पराक्रम ।<br>२. राज्यमा रहने प्रमुख तत्त्व (प्रमुख उत्साह, मन्त्रणा आदि) ।<br>३. सक्रिय दैवी सामर्थ्यका रूपमा रहेका देवपत्नी वा स्त्रीदेवता (इन्द्राणी, वैष्णवी, ब्रह्माणी, ब्रह्मवादिनी, कौमारी, नारसिंही र वाराही) ।<br>४. ईश्वरीय प्रकृति वा माया ।<br>५. शब्दका विविध अर्थ बुझाउने तीन सामर्थ्य वा अर्थशक्ति (अभिधा, लक्षणा र व्यञ्जना) ।<br>६. वाष्प, ऊर्जा वा बिजुलीबाट पैदा हुने सामर्थ्य; क्षमता ।<br>७. भग; योनि (तन्त्रमा) ।<br>८. प्रहार गरिने अस्त्र (भाला, बर्छा आदि) ।<br>९. वास्तु वा मूर्तिमा नौ अमलबराबरको नाप; |

| | |
|---|---|
| | नौ अङ्गुल; मात्राको नौगुनाबराबरको नाप; प्रादेश, सूत्र, ग्रह वा द्वारबराबरको नाप । |
| नेपाली शब्दसागर | दैवी सामर्थ्य भएकी देवी, देवत्वको इच्छा र मायारूपकी देवी; ईश्वरीय प्रकृति वा माया; प्राचीनकालीन अमोघ अस्त्र; गौरी, दुर्गा, भगवती; मनको अदम्य उत्साह; तन्त्रशास्त्रमा भग, योनि; बुद्ध दर्शनमा तारा; बाफ-बिजुलीबाट उब्जने क्षमता; जोड, बल, पराक्रम; राजनीति-दर्शनमा राज्यमा स्थित प्रमुख तत्व, उत्साह-प्रेरणा आदि तत्व; शब्दका विविध अर्थ बुझाउने तीन शक्ति (अभिधा, लक्षणा, व्यञ्जना); नौ अंगुल बराबरको नाप वा नापो, प्रादेश, सूत्र, ग्रह, द्वार आदि वास्तु वा मूर्ति कलाको नापो । |
| राष्ट्रिय नेपाली शब्दकोश | मनुष्य वा पशुद्वारा संचार गरिएको ताकत वा बल । (एनर्जी) । ताकत; बल । योग्यता; राजशक्ति । विद्युत्शक्ति (करेण्ट) । मन्त्रद्वारा पठाइएको अरु कुनै किसिमको शक्ति । सामर्थ्य; ताकत; बल (फोर्स) । खूबी; क्षमता; योग्यता । प्रभाव । ईश्वरीय शक्ति; देवी । ठूलो र पराक्रमी राज्य जसको यथेष्ट धन र सेना आदि छ । (पावर) । प्रकृति; माया । |

## २. विशेष अर्थ

### २.१. **जरो** (Root)

मूल, स्रोत, दृष्टिकोण, मौलिकता, स्थानीयता, सान्दर्भिकता, अपनत्व, स्वामित्वको सवाल ।

प्रत्येक सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) को मार्गदर्शकका रूपमा (जानेर वा नजानेर) कुनै न कुनै दर्शन (Philosophy), सिद्धान्त (Theory), वाद (-ism), मताग्रह (Ideology), प्रतिमान (Paradigm) रहेकै हुन्छ, जसअनुसार दृष्टिकोण, प्रणाली, रणनीति, कार्ययोजना आदि बन्ने हुन् । तसर्थ, कुनै पनि सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) को मूल्याङ्कन गर्नका निमित्त पहिले त त्यसको दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान आदिलाई नै जाँचबुझ गर्नुपर्छ ।

कुनै पनि दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, प्रणाली, रणनीति, कार्य योजना आदिलाई "जरो" को कसीमा जाँच्नका लागि उक्त कुराको मूल, स्रोत, उद्‌गमबिन्दु कहाँ हो भन्ने परीक्षण गनु पर्ने हुन्छ ।

कुनै दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, प्रणाली, रणनीति, कार्य योजना आदिको "जरो" नेपाल देशमा एवं नेपाली समाजमा रहेनछ भने उक्त कुरामा नेपालको मौलिकता, स्थानीयता, सान्दर्भिकता रहँदैन र त्यसमा हाम्रो अपनत्व एवं स्वामित्व समेत हुँदैन ।

कुनै पनि कुराको "जरो" (Root) नेपालमै हो वा अन्यत्रै भन्ने तथ्यलाई परीक्षणबाट सजिलै पत्ता लगाउन सकिन्छ । जस्तै :–

"पूँजीवाद" (Capitalism), "मार्क्सवाद" (Marxism), "लेनिनवाद" (Leninism), "माओवाद" (Maoism), "समाजवाद" (Socialism), "प्रजातान्त्रिक समाजवाद" (Social Democracy), "बहुराष्ट्रियता" (Plurinationalism), "राष्ट्रराज्य" (Nation State) आदिको मूल, स्रोत, उत्पत्तिस्थल, उद्‌गमबिन्दु नेपाल होइन; ती सिद्धान्तहरुमा नेपालको मौलिकता, स्थानीयता, सान्दर्भिकता रहेको छैन र तिनीहरुमा हाम्रो अपनत्व एवं स्वामित्व समेत छैन । तसर्थ "पूँजीवाद", "मार्क्सवाद", "लेनिनवाद", "माओवाद", "समाजवाद", "प्रजातान्त्रिक समाजवाद", "बहुराष्ट्रियता", "राष्ट्रराज्य" आदिको "जरो" नेपालमा नरहेको तथ्य छर्लङ्ग हुन्छ । तसर्थ उक्त कुराहरुलाई मार्गदर्शक मान्ने कुनै पनि सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) को "जरो" सिद्धान्ततः नेपाल देश एवं नेपाली समाजमा नरहेको भन्नै पर्ने हुन्छ ।

वास्तवमा, कांग्रेस र कम्युनिस्टको जन्मस्थल त नेपाल बाहिर हो नै; तिनीहरूका मार्गदर्शक दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान आदि पनि विदेशी विधर्मी मूल/स्रोतका हुन् । तसर्थ, तिनीहरुको "जरो" नेपाल बाहिर छ । राप्रपा र राप्रपा नेपाल लगायतका सबै पूर्वपञ्च घटकहरू, कथित मधेशवादीहरू, कथित जनजातिवादीहरूको पनि मार्गदर्शक दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान आदि पराइ (Exogenous) मूल/स्रोतबाट नै लिइएका हुनाले तिनीहरुको "जरो" पनि नेपाल बाहिरै रहेको छ । बचेखुचेका कथित राजावादीहरूको सैद्धान्तिक आधार वा राजनीतिक दर्शन पनि हाम्रा मौलिक दर्शन नभई मेकियावेलीको दर्शन भएकाले सिद्धान्ततः

तिनको “जरो” पनि नेपालमा छैन, बाहिरै छ ।

समाजमा, देशमा संसारमा परिवर्तन ल्याउने हो भने सर्वप्रथम त सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, विश्वदृष्टिकोणको सङ्कथन, अभिनिर्माण एवं मूलप्रवाहीकरणमा ध्यान दिनु पर्छ । तसर्थ, “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” ले अहिले उक्त कार्यलाई नै प्राथमिकता दिएको छ । “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” (Root & Locus Movement) का मार्गदर्शक दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान आदिको मूल/स्रोत नेपाल देश एवं नेपाली समाजमै भएको हुनाले नै यसलाई मौलिक भनिएको हो, जसमा नेपाली दृष्टिकोण, मौलिकता, स्थानीयता, सान्दर्भिकता, अपनत्व, स्वामित्व छ ।

## २.२. कीलो/किलो (Locus)

केन्द्र, प्रभुत्व, स्वाधीनता, स्वतन्त्रता, सार्वभौमसत्ताको सवाल ।

प्रत्येक सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) को संस्थागत इतिहास, मुख्य नेतृत्वको पृष्ठभूमि एवं क्रियाकलाप र त्यसको सैद्धान्तिक “जरो” (Root) आदिलाई विश्लेषण हेरेर जाँचबुझ गर्न सकिन्छ कि त्यसको केन्द्र कहाँ हो र त्यसका कार्यहरुमा निर्णायक प्रभुत्व कसको रहेको छ ? उक्त सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) स्वाधीन हो कि पराधीन र त्यो स्वतन्त्र हो कि पराइबाट नियन्त्रित भन्ने थाहा पाउन पनि खासै अप्ठ्यारो पर्दैन । उक्त सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) का रणनीति एवं कार्य योजना के कस्ता छन् र त्यसले व्यवहारतः के कसो गर्दै आएको छ भन्ने साक्ष्यहरुलाई विश्लेषण गर्दा तथ्य उजागर भइहाल्छ ।

नेपालका राजनीतिक तथा अन्य सबै प्रकारका सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) को जाँचबुझ गरौं कि ती नेपाली जनताकै शक्तिबाट सञ्चालित हुन् वा पराइ शक्तिका दलाल, अह्रौटेभरौटे, प्यादा हुन्, जसबाट तिनीहरुको “किलो” (Locus) नेपालमै हो वा अन्यत्रै भन्ने थाहा पाइन्छ ।

नेकपा (एमाले) र माओवादी लगायतका सबै कम्युनिस्ट घटकहरू, नेपाली कांग्रेस लगायतका सबै कांग्रेसी घटकहरू, राप्रपा र राप्रपा नेपाल लगायतका सबै पूर्वपञ्च घटकहरू, आफूलाई मधेशवादी भन्ने विभिन्न सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) हरू, आफूलाई जनजातिवादी भन्ने

विभिन्न सङ्घ, सङ्गठन, संस्था, पार्टी (दल) हरू – कसको परीक्षण हुन बाँकी छ अब ? तिनीहरुको व्यवहारले नै तिनको किलो (Locus) कहाँ छ भन्ने देखाइरहेकै छैन र ? नेपाली जनतालाई शक्तिको केन्द्र नै मान्दैनन् यिनले । कोही दक्षिण, कोही उत्तर, कोही पश्चिम, अनि कोही पूर्वतिर "किलो" गाडिएका हुनाले यिनीहरू कसरी स्वतन्त्र, स्वाधीन हुन्छन् ? पटक पटक सत्तारुढ भएका हैनन् र यिनै ? पटक पटक सत्ता पाउँदा बेइमानी गर्ने यिनै हैनन् र ? अब पनि तिनीहरूको हातमै यो देशको जिम्मेवारी रहिरहनु दुर्भाग्यको पनि पराकाष्ठा हुने छर्लङ्ग भइसकेको छ ।

राजनीतिक प्रकृतिका पार्टी, सङ्घ, सङ्गठनहरूलाई मात्र जरो र किलोको कसीमा जाँचबुझ/परीक्षण गरेर पुग्दैन; धर्म-सम्प्रदाय, संस्कृति, अर्थतन्त्र, शिक्षा, स्वास्थ्य आदि क्षेत्रमा पनि जरो र किलोको कसी लगाएर व्यवहार गर्नु वाञ्छनीय छ ।

## २.३. जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति (The Root and Locus Movement)

युगद्रष्टा डा. निर्मलमणि अधिकारी "आयोदधौम्य" को सङ्कल्प एवं आह्वानबाट स्थापित महाअभियान हो "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" (The Root and Locus Movement) ।

सैद्धान्तिक एवं व्यावहारिक सबै आधारमा "जरो" (Root) र "किलो" (Locus) दुवै नेपाल देशभित्रै एवं नेपालीजनमै भएको हुनाले नै यो महाअभियानलाई जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति भनिएको हो ।

हाम्रो महाअभियानको "जरो" (Root) नेपाल देश एवं नेपालीजनमै भएको हुनाले यो नेपाल देश एवं नेपाली समाजका निमित्त स्वाभाविक रूपमा मौलिक (Original/Fundamental) हो ।

हाम्रो महाअभियानको किलो/कीलो (Locus) नेपाल देश एवं नेपालीजनमै भएको हुनाले यो नेपाल देश एवं नेपाली समाजका निमित्त स्वाभाविक रूपमा रैथाने (Indigenous/Preeminent) हो ।

जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्तिलाई अङ्ग्रेजी भाषामा रुट एण्ड लोकस मुभ्मेन्ट् (Root and Locus Movement) भनेर

नाम राखिएको छ । अङ्ग्रेजी शब्द "मुभ्मेन्ट्" (Movement) र नेपाली शब्द "अभियान" लाई समानार्थक मानेर प्रयोग गर्ने प्रचलन रहिआएको छ; तथापि हामीलेचाहिँ "शक्ति" शब्दलाई जनाउनका लागि प्रयोग गरेका छौँ । हामीले हाम्रो महाअभियानको नाममा प्रयोग गरेको "शक्ति" शब्दको समष्टि अर्थलाई बोक्ने उपयुक्त शब्द अङ्ग्रेजी भाषामा नपाइएको हुनाले धेरै नजिकको अर्थ दिने "मुभ्मेन्ट्" (Movement) शब्दले काम चलाउनु परेको हो ।

यथार्थमाचाहिँ, "शक्ति" शब्दको धेरै नै बृहत् अर्थ छ, जसमा "अभियान"/"मुभ्मेन्ट्" (Movement) स्वतः समेटिन्छ । दार्शनिक परिप्रेक्ष्यमा "अभियान" तथा "मुभ्मेन्ट्" (Movement) ले गति (चलायमानता) लाई जनाउँछन् भने "शक्ति" ले गति र स्थिति दुइटैलाई समेटी स्थितिगत्यात्मक (Stato-dynamic) समष्टिलाई जनाउँछ । विज्ञान, प्रविधि, धर्म एवं सहृदयता संयोजन गर्ने हाम्रो विश्वदृष्टिकोण पनि स्थितिगत्यात्मक (Stato-dynamic) भएकाले हामीले "शक्ति" संज्ञाद्वारा संज्ञित हुनु स्वाभाविक हो । भौतिकविज्ञानमा कार्यका लागि दूरी तय गरेको (स्थित्यात्मक दिक्का सापेक्षतामा गत्यात्मक चाल) हुनै पर्छ, जसको स्रोत "शक्ति" नै हो । पारस्परिक सम्बन्धको आधारले के पनि भन्न सकिन्छ भने जहाँ "अभियान"/"मुभ्मेन्ट्" (Movement) को विद्यमानता हुन्छ, त्यहाँ अवश्यमेव "शक्ति" पनि भएकै हुन्छ । तसर्थ, "अभियान"/"मुभ्मेन्ट्" (Movement) ले धेरै हदसम्म "शक्ति" शब्दको तात्पर्यलाई वहन गर्न सक्छन् ।

उपर्युक्त पृष्ठभूमिमा नै, "वैज्ञानिकतायुक्त धर्म धार्मिकतायुक्त विज्ञान" को मान्यताअनुरूप जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्तिलाई अङ्ग्रेजी भाषामा रुट एण्ड लोकस मुभ्मेन्ट् (Root and Locus Movement) भनिएको हो ।

# जरो-कीलो प्रश्नोत्तरी

**“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” के हो ?**

“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” (Root & Locus Movement) एक महाअभियान हो ।

नेपाललाई एक विकसित, न्यायपूर्ण, स्वाधीन, समृद्ध, सहृदयतापूर्ण राज्यराष्ट्र (State Nation) का रूपमा विश्वकै अग्रणी देश बनाउन यो महाअभियान आरम्भ गरिएको हो। यो महाअभियान युगद्रष्टा डा. निर्मलमणि अधिकारी “आयोदधौम्य” को सङ्कल्प एवं आह्वानबाट स्थापित भएको हो ।

**“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को स्थापना कहिले भएको हो ?**

करिब दुई दशकसम्म सैद्धान्तिक, वैचारिक, नीतिगत चिन्तनपश्चात् वि.सं. २०७२ मा दशैंको घटस्थापनाको दिनमा विधिपूर्वक सङ्कल्प लिई वि.सं. २०७२ मै वसन्तपञ्चमी (श्रीपञ्चमी) को दिनमा “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को स्थापनाको घोषणा गरिएको हो ।

**यो राजनीतिक पार्टी हो कि होइन ?**

अहिले यो एक बृहत् “अभियान” (Movement) हो । विज्ञान, प्रविधि, धर्म, समाज, संस्कृति, अर्थतन्त्र, शिक्षा, स्वास्थ्य, कृषि, पर्यटन, उद्योग, परराष्ट्रनीति, वातावरण, पूर्वाधार तथा मानव विकास आदि आदि क्षेत्रहरूझैं

नै राजनीति पनि “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को कार्यक्षेत्रभित्र छ । तसर्थ, नेपालको राजनीति पनि “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को एक मुख्य सरोकारको विषय-वस्तु हो ।

“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” लाई चुनावी प्रतिस्पर्धामा भाग लिने राजनीतिक पार्टीको रूपमा अगाडि बढाउनका निमित्त समाज वैज्ञानिक जनमत विश्लेषणका आधारमा निर्णय गरिनेछ । पहिले त नेपालभित्र तथा नेपालबाहिर बसोबास गर्ने नेपाली नागरिकहरुसम्म व्यापक सम्पर्क विस्तार गरी यदि जनमतअनुसार नै “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” उपयुक्त समयमा निर्वाचनमा भाग लिने एवं निर्वाचनमार्फत् जनअनुमोदन हासिल गरी राज्यसत्ता सञ्चालन गर्ने राजनीतिक संस्था (पार्टी/दल) का रूपमा अगाडि आउनेछ ।

**“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को लक्ष्य के हो ?**

विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्धका आधारमा स्थापित हुने “वैज्ञानिक सत्ययुग” नै “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को लक्ष्य हो ।

**“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को उद्देश्य के हो ?**

नेपाललाई वर्तमान सङ्कटको सङ्क्रमणबाट मुक्त गराउने, विश्वका विकसित देशहरुको समूहमा पुऱ्याउने र अन्ततोगत्वा नेपाललाई नयाँ वैश्विक संरचनाको अग्रणी एवं केन्द्र बनाउने “जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को उद्देश्य हो ।

**यो महाअभियानको हालको मुख्य कार्यभार के हो ?**

“जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति” को हालको मुख्य कार्यभार निम्नानुसार रहेका छन् :–

(क) देशका लागि अनुपयुक्त दर्शन (Philosophy), सिद्धान्त (Theory), वाद (-ism), मताग्रह (Ideology), प्रतिमान (Paradigm), प्रणाली

(System), रणनीति (Strategy), कार्य योजना (Action plan) आदिको निराकरण गर्न नेपालमै "जरो-किलो" भएका मौलिक रैथाने दर्शन, सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, प्रणाली, रणनीति, कार्यनीति आदिको अनुसन्धान, विकास, प्रवर्धन गरी प्रभुत्व स्थापित समेत गराउनका निमित्त कार्य गर्नु;

(ख) अयोग्य नेतृत्व प्रदान गर्दै आइरहेका राजनीतिक, सामाजिक, सांस्कृतिक, आर्थिक, शैक्षिक आदि क्षेत्रका सङ्घ, सङ्गठन, संस्थाहरूको विकल्पमा यो देशका लागि सुयोग्य नेतृत्व विकास गराई देशको सर्वाङ्गीण उन्नति-प्रगतिका लागि सर्वश्रेष्ठ नेतृत्व सुनिश्चित गर्नका लागि कार्य गर्नु;

(ग) नेपालमा विकास, न्याय, स्वाधीनता, समृद्धि, सुख, शान्ति, सहृदयता प्रत्याभूति गर्नको निमित्त "विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्ध" सुनिश्चित गर्नका निमित्त कार्य गर्नु;

(घ) नेपाललाई राज्यराष्ट्रका रूपमा सुसञ्चालन गर्ने राजनीतिक नेतृत्व विकास गर्न एवं सो नेतृत्वलाई जनअनुमोदनद्वारा राज्यसत्ताको निर्णायक हैसियतमा स्थापित गराउनका निमित्त कार्य गर्नु ।

**"आधारशिला चतुष्टय" भनेको के हो ?**

विज्ञान, प्रविधि, धर्म र सहृदयतालाई "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले आफ्नो मुख्य आधार मानेको छ । तसर्थ, विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्धलाई नै समष्टिकृत रूपमा आधारशिला चतुष्टय भनिएको हो ।

**विचारधाराको दृष्टिकोणबाट "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" कस्तो प्रकारको शक्ति हो ?**

विचारधाराको दृष्टिकोणबाट दक्षिणपन्थी, वामपन्थी, मध्यपन्थी भनेर छुट्याउने जुन पद्धति छ, त्यो भन्दा पृथक् विश्वदृष्टिकोण भएको महाअभियान भएको हुनाले "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" उक्त कित्ताकाट वा वर्गीकरणमा अटाउँदैन। तसर्थ, हामी दक्षिणपन्थी,

वामपन्थी, मध्यपन्थीमध्ये केही पनि होइनौं । हामी तिनीहरु सबैभन्दा पृथक् एवं मौलिक हौं । पूँजीवादी, कम्युनिस्ट, समाजवादी, प्रजातान्त्रिक समाजवादी आदि भनेर कित्ताकाट वा वर्गीकरण गर्ने पद्धतिमा पनि "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" अटाउँदैन । हामी पूँजीवादी, कम्युनिस्ट, समाजवादी, प्रजातान्त्रिक समाजवादी आदि इत्यादिमध्ये केही पनि होइनौं । हामी तिनीहरु सबैभन्दा पृथक् एवं मौलिक हौं ।

वास्तवमा अहिलेसम्म चलिआएका विचारधाराका वर्गीकरण वा कित्ताकाटको आधारमा मात्र विश्लेषण गरेर विचारधाराको दृष्टिकोणबाट "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" कस्तो प्रकारको शक्ति हो भन्ने परिभाषा गर्न सम्भव छैन । विज्ञान, प्रविधि, धर्म एवं सहृदयतालाई आधारशिला बनाउँदा स्थापित हुनजाने समष्टिकृत विश्वदृष्टिकोण (Worldview) बाट नै "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को विचारधाराको मार्गदर्शन हुने भएकाले सोही अनुरूपको मौलिक परिभाषा बनाएर मात्र यो महाअभियानलाई विश्लेषण, मूल्याङ्कन, वर्गीकरण गर्न सकिन्छ ।

**राज्यराष्ट्र** (State Nation) **भनेको के हो ? "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले नेपाललाई किन राज्यराष्ट्रका रूपमा मानेको हो ?**

राज्यराष्ट्र (State Nation) भनेको निम्नानुसारका मान्यताहरु समेटिएको एक सिद्धान्त हो :–

(क) राज्य (State) नै राष्ट्र (Nation) हो ।

(ख) राज्य र राष्ट्र अलग अलग तत्त्वहरु होइनन् । "राज्य" र "राष्ट्र" समान अर्थ दिने संज्ञाहरू हुन् – जसमा "राज्य" संज्ञामा भू-राजनीतिक-वैधानिकतालाई र "राष्ट्र" संज्ञामा सांस्कृतिक सामाजिक एकत्वलाई जोड दिइएको हुन्छ ।

(ग) "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व हो । प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिका आधारमा "राष्ट्र" को परिभाषा गर्नु हुँदैन र जुन राज्यको नागरिक होइन्छ, सोही राज्यको नागरिकतासँगै राष्ट्रियता पनि निर्धारण हुन्छ ।

(घ) "राज्यराष्ट्र" मा नागरिक तथा राजनीतिक अधिकार र सांस्कृतिक अधिकारलाई तिनीहरुका विशिष्ट परिप्रेक्ष्यमा विशिष्टतापूर्वक प्रत्याभूत गरिन्छ । प्रजातीय, जातीय, साम्प्रदायिक, सामुदायिक, क्षेत्रीय आदि पहिचानहरु सांस्कृतिक अधिकारका विषय-वस्तु हुन् भने नागरिकता एवं राष्ट्रियताचाहिँ नागरिक तथा राजनीतिक अधिकारका विषय-वस्तु हुन् । अर्थात्, नागरिक तथा राजनीतिक अधिकारका निमित्त व्यक्ति नै आधारभूत एकाइ हो र सांस्कृतिक अधिकारका निमित्त देशका प्रजातीय, जातीय, साम्प्रदायिक, सामुदायिक, क्षेत्रीय आदि पहिचानहरुका आधारमा बनेका अवयवहरुलाई एकाइ मानिन्छ ।

तसर्थ, नागरिक तथा राजनीतिक अधिकारका परिप्रेक्ष्यमा प्रजाति, जाति, सम्प्रदाय, समुदाय, भौगोलिकक्षेत्र आदिबाट अभिनिर्मित पहिचानको निर्णायक भूमिका हुँदैन; तर सांस्कृतिक अधिकारका परिप्रेक्ष्यमाचाहिँ राज्य संस्कृति, प्रजाति, जाति, सम्प्रदाय, समुदाय, भौगोलिकक्षेत्र आदिबाट निरपेक्ष रहन सक्दैन ।

"राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व मान्ने हाम्रो मान्यता भएकाले नाक चुच्चो छ कि थेप्चो (नेप्टो) छ, आँखा विस्फारित (खुलेको) छ कि चिम्सो छ, रङ्ग गोरो छ कि कालो छ, कपाल कस्तो छ, जुँगा-दाह्री छपक्कै बाक्लो आउँछ कि कताकति तिलचामले मात्र आउँछ, हिमाली भेगको हो वा पहाडी भेगको हो वा तराइ मधेश भेगको हो, कुन जातिको हो, कुन प्रजातिको हो, कुन जातको हो – यस्ता यस्ता निहुँमा मान्छेको कित्ताकाट गर्ने/ध्रुवीकरण हुने घृणावादी राजनीतिका दृष्टिकोणबाट "राष्ट्र" को परिभाषा गर्ने पद्धतिलाई हामी अस्वीकार गर्छौं । सोही कारणले नै हामी राष्ट्रराज्य (Nation State), द्वि-राष्ट्रिय राज्य (Two-Nation State) तथा बहुराष्ट्रिय राज्य (Multi-Nation State/ Plurinationalism) भन्ने सिद्धान्तलाई पनि मान्दैनौं । नेपाल एक राज्यराष्ट्र हो भन्ने हाम्रो मान्यता छ ।

नेपाल विश्वकै सर्वप्राचीन देशहरूमध्ये एक हो । यो महाभारतकाल भन्दा पनि पुरानो, रामायणकाल भन्दा पनि पुरानो देश हो; राज्य-राष्ट्र (स्टेट-नेशन) हो । यसका सीमामा परिवर्तन भएका छन्, शासकहरू परिवर्तन भएका छन्, तर राज्यराष्ट्रका रूपमा यो अविच्छिन्न अस्तित्वमा

छ वैदिककालदेखि नै । हजारौँ-हजारौँ वर्षको इतिहास छ नेपालको सार्वभौमसत्ता, स्वतन्त्रता, स्वाधीनताको । हिमाल, पहाड, तराइ नेपालका अवयवका रूपमा रहेका छन् जहिले पनि । नेपाल कुनै एक जात वा जाति वा जनजाति को, कुनै एक वर्गविशेषको मात्र देश नभएर विविधताहरूको समष्टि रूप हो र ती सबैको संयोजन भइसकेर एउटा राज्य-राष्ट्र (स्टेट-नेशन) का रूपमा विकसित भइसकेको छ ।

नेपालको राज्यराष्ट्र (State Nation) स्वरूपलाई सुदृढ पार्नु नै नेपाली राष्ट्रियताका पक्षधरहरुको कर्तव्य हो । तसर्थ, "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले विशिष्ट रूपमा "राज्यराष्ट्र" सिद्धान्तमार्फत् नेपाली राष्ट्रियताको अद्यावधिक व्याख्या गरेर बृहत्तर राष्ट्रिय एकताको सहृदयतावादी राजनीतिक ढाँचा प्रस्तुत गरेको हो ।

**"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले पहिचानको राजनीति** (Identity politics) **लाई कसरी हेर्छ ?**

मौलिक रैथाने धर्म, संस्कृति, रितिथिति, भाषा, कला, साहित्य, शिल्प, उद्यम आदिका क्षेत्रमा पुनर्जागरण, पहिचान एवं अस्मिताको खोजी, अनुसन्धान, विकास, मूलप्रवाहीकरण जस्ता कार्यलाई "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले समर्थन गर्छ र सकेसम्म सहयोग पनि गर्छ । तर, पहिचानलाई निहुँ बनाएर कसैले घृणावादी राजनीति गर्छ भने जो कोही पनि घृणावादीका विरुद्धमा उभिन्छ "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" र तिनीहरुका घृणावादी सोच र कार्यलाई निकारण पनि गर्छ ।

नागरिक-राजनीतिक अधिकारका परिप्रेक्ष्यमा व्यक्ति नै सर्वोच्च हो र व्यक्तिका गुण/दोषका आधारमा कसी लगाएर ठीक/बेठीक, असल/खराब के हो भन्ने निर्णय हुनु वाञ्छनीय छ । तर, पहिचानको राजनीति (Identity politics) गर्ने भन्नेहरुले त व्यक्तिका गुण/दोषका आधारमा होइन कि जन्मकै आधारमा कुन जाति, प्रजाति, वर्ण, समुदाय हो भन्ने कुरालाई निहुँ बनाएर, घृणाका नजरबाट हेरेर कित्ताकाट गर्छन् । त्यस्तो घृणावादी सोच र कार्यलाई "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले सदैव अस्वीकार गर्नेछ ।

पहिचान/अस्मिता (Identity) को राजनीतिका नाममा घृणावादलाई मलजल नगरौँ । सम्बन्धको आधार प्रेमलाई बनाऔँ; घृणालाई सम्बन्धको आधार नबनाऔँ । वर्तमान नेपालमा तीव्र गतिमा कित्ताकाट, ध्रुवीकरण, सङ्गठन/विगठन/विघटन भइरहेको परिस्थितिमा हाम्रो अगाडिको जल्दोबल्दो सवाल स्पष्ट छ : घृणालाई सम्बन्धको आधार बनाउने हो वा प्रेमलाई ? असहिष्णुता, विद्वेष, झगडा, विखण्डन, हिंसाको निमित्त निहुँ खोज्ने हो भने त्यस्तो निहुँ जहिले पनि जहाँ पनि भेटिनेछ र सहिष्णुता, सामञ्जस्य, मैत्री, शान्ति, एकता, सहृदयताको निमित्त आधार खोज्ने हो भने पनि पाइला-पाइलामा पाइनेछ ।

निर्णय त हामीले गर्नुछ : के हो हाम्रो अभीष्ट ? नेपाली राष्ट्रियताको जगलाई सुदृढ गराउने हो वा यसलाई नामेट गराउने ? सहृदयी एकताले उज्यालो भविष्यतिर डोऱ्याउनेछ र विद्वेषपूर्ण विखण्डनले विनाशलाई निम्त्याउनेछ । कि भन्नु पऱ्यो – नेपाल भन्ने राष्ट्र खडा गर्नु नै गलत थियो; नत्र नेपाल राष्ट्रलाई जीवित यथार्थ मान्ने हो भने नेपाली राष्ट्रियतालाई जसरी पनि बलियो नबनाई सुखै छैन । नेपाली राष्ट्रियतालाई बलियो बनाउने हो भने यसका आधारहरूलाई मजबुत बनाउनै पर्छ । नेपाली राष्ट्रियताका बृहत्तर आधारहरू पहिचान गरौँ; नेपाली राष्ट्रियताको बृहत्तर एवं अद्यावधिक परिभाषा, व्याख्या, विश्लेषण, अर्थापन गरौँ; साझा राष्ट्रिय चेतनालाई अवलम्बन गरी नेपाललाई “राज्यराष्ट्र” का रूपमा अग्रणी बनाऔँ ।

**नेपालका पुराना र कथित नयाँ राजनीतिक पार्टीहरुलाई कसरी मूल्याङ्कन गर्ने ?**

नेपालमा परम्परागत कांग्रेस, कम्युनिस्ट, पूर्वपञ्च, कथित मधेशवादी, कथित जनजातिवादी आदि इत्यादिका साथै कथित नयाँ राजनीतिक पार्टीहरु पनि छन् । नेपाली कांग्रेस लगायतका सबै कांग्रेसी घटकहरू, नेकपा (एमाले) र माओवादी लगायतका सबै कम्युनिस्ट घटकहरू, राप्रपा र राप्रपा नेपाल लगायतका सबै पूर्वपञ्च घटकहरू तथा अन्य पनि राजवादीहरु, कथित मधेशवादीहरू, कथित जनजातिवादीहरू असफल, गतार्थ (आउट् डेटेड्) तथा असान्दर्भिक भइसकेका छन् भन्नका लागि

ठूलो तर्क गरिरहनु पर्दैन । किनभने अहिले देशको स्थिति के छ भन्ने त हाम्रो सामु प्रत्यक्ष छँदैछ ।

सङ्कटै सङ्कटको सङ्क्रमणकालबाट गुज्रिँदै गर्दा वर्तमान नेपालको दुरावस्थाले हामी सबैलाई पीडित बनाइरहेको छ । हिंसा, अराजकता, हाहाकार !! घृणा, द्वेष, वैमनस्य !! असुरक्षा, अशान्ति, त्राहीत्राही, रोदन, चित्कार !! भ्रस्टाचार, तस्करी, कालाबजारी, महङ्गी !! बेरोजगारी, पलायन, निराशा !! गरिबी, रोग, भोक, शोक !! विकृति, विसङ्गति, पापाचार !! अन्याय, अत्याचार, शोषण, दमन, असमानता !! को हो दोषी ? सबै नै पटक पटक सत्तामा पुगे तथा अहिले पनि सत्तासीन वा सत्ताकांक्षी छन्, तिनीहरु नै दोषी हुन् ।

पटक पटक सत्तारुढ भएका हैनन् र यिनै ? पटक पटक सत्ता पाउँदा बेइमानी गर्ने यिनै हैनन् र ? कसको परीक्षण हुन बाँकी छ अब ? अब पनि तिनीहरूको हातमै यो देशको जिम्मेवारी रहिरहनु दुर्भाग्यको पनि पराकाष्ठा हुने छर्लङ्ग भइसकेको छ ।

यस्तो बेलामा अब नेपालमा नयाँ राजनीतिक विकल्प चाहियो भनेर प्रयत्न हुनु वाञ्छनीय नै हो । त्यस्ता प्रयत्नहरु विभिन्न रूपमा प्रकटित भएका छन् । डा. निर्मलमणि अधिकारीको आह्वानमा खडा हुँदै गरेको महाअभियान ‘जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति’ (The Root and Locus Movement) मौलिक रैथाने दर्शन, सिद्धान्त, विश्वदृष्टिकोण, प्रतिमान सहित अगाडि आएको छ । अर्कातिर, अनेक दल (पार्टी) खोलेर निर्वाचन आयोगमा दर्ता गरी कोही युरोपका त कोही अमेरिकाका सपना देखाउन थालिसकेका छन् । कतिको त जोडबल नै आफू “नयाँ शक्ति” हो है भनेर जिद्दी गर्नुमै केन्द्रित रहेको छ । तिनीहरुलाई कसरी मूल्याङ्कन गर्ने त ? तिनीहरूका दार्शनिक मान्यता, सिद्धान्त, वाद, रणनीति, कार्यनीति आदिको परीक्षण जरो र किलोको कसीमा गरौँ । तब छर्लङ्ग हुनेछ कि अब नेपालको नीति र नेतृत्वका लागि उनीहरू उपयुक्त वा अनुपयुक्त के छन् ।

कथित नयाँ दल, पार्टी, शक्ति आदि इत्यादिले जेलाई मार्गदर्शक मान्छन्, सो दार्शनिक मान्यता, सिद्धान्त, वादमा नेपालको मौलिक रैथाने विश्वदृष्टिकोण (वर्ल्डभ्यू) छ ? छैन किनभने तिनीहरु वास्तवमा

सुधारवादी/संशोधनवादी पूँजीवादका अनुयायी हुन् । तिनीहरुका हालसम्म सार्वजनिक दस्ताबेज हेर्दा तिनीहरु अवधारणाको दृष्टिकोणबाट सुधारवादी/संशोधनवादी पूँजीवादका अनुयायी र व्यावहारिक दृष्टिकोणबाट कम्युनिष्ट र पूँजीवादी सोचको घालमेलबाट पैदा हुने 'कपू'-संयन्त्रका थप (अतिरिक्त) खेलाडी मात्र हुन् भन्ने तथ्य नै उजागर भएको छ ।

तात्पर्य के हो भने नामपट्ट (साइनबोर्ड) र नेता मात्र फरक फरक हुन्, तर सारमा चाहिँ कथित नयाँ दल, पार्टी, शक्ति आदि इत्यादि पनि नेपाली कांग्रेस लगायतका सबै कांग्रेसी घटकहरू, नेकपा (एमाले) र एनेकपा (माओवादी) लगायतका सबै कम्युनिस्ट घटकहरू, राप्रपा र राप्रपा नेपाल लगायतका सबै पूर्वपञ्च घटकहरू तथा अन्य पनि राजवादीहरु, कथित मधेशवादीहरू, कथित जनजातिवादीहरूकै ड्याङ्मा उम्रेका र हुर्किँदै गरेका वा प्रयत्नरत उपक्रम मात्र हुन् । तिनीहरु अवधारणाको दृष्टिकोणबाट सुधारवादी/संशोधनवादी पूँजीवादको अनुयायी र व्यावहारिक दृष्टिकोणबाट कम्युनिष्ट र पूँजीवादी सोचको घालमेलबाट पैदा हुने 'कपू'-संयन्त्रकै खेलाडी बन्ने महत्वाकांक्षाले पैदा भएको देखिन्छ ।

परम्परागत कांग्रेस, कम्युनिस्ट, पूर्वपञ्च, कथित मधेशवादी, कथित जनजातिवादी आदि इत्यादिको विकल्प बनेर कथित नयाँ दल, पार्टी, शक्ति आदि इत्यादि जस्तै नामपट्ट (साइनबोर्ड) र नेता मात्र अर्कै अर्कै भएका, तर सारमा चाहिँ सुधारवादी/संशोधनवादी पूँजीवादका अनुयायी तथा कम्युनिष्ट र पूँजीवादी घालमेलबाट पैदा हुने 'कपू'-संयन्त्रका थप विस्तारका रूपमा कार्यरत पार्टीहरु सफल भए भने त्यसबाट क्षणिक राहत भइहाल्यो भने तापनि तात्त्विक परिवर्तन भने हुनेछैन । नेपालका लागि सान्दर्भिक एवं उपयुक्त ती शक्ति मात्र ठहरिन्छन् जसको दार्शनिक मान्यता, सिद्धान्त, वाद, रणनीति, कार्यनीति सबैको जरो र किलो नेपालमा रहेको छ । तसर्थ, अहिले नेपाललाई चाहिएकोचाहिँ 'जरो' र 'किलो' दुवै नेपालमै भएको मौलिक रैथाने शक्ति हो ।

**"जरो-किलो" को कसीमा राजनीतिभन्दा बाहिरका शक्तिहरुलाई पनि परीक्षण गर्न सकिन्छ कि सकिँदैन ?**

अवश्यै सकिन्छ र परीक्षण गर्नु पर्छ । वास्तवमा, राजनीतिक प्रकृतिका

पार्टी, सङ्घ, सङ्गठनहरूलाई मात्र जरो र किलोको कसीमा परीक्षण गरेर पुग्दैन; यहाँ त धर्म, संस्कृति, अर्थतन्त्र, शिक्षा, स्वास्थ्य आदि आदि क्षेत्रहरूमा पनि पराइ शक्तिहरूको बिगबिगी भएकाले सबैतिर "जरो-किलो" को कसी लगाएर व्यवहार गर्नु आवश्यक छ । उदाहरणार्थ – हाम्रै मौलिक रैथाने धर्म-सम्प्रदाय (वैदिक सनातन हिन्दू, बौद्ध, किरात, जैन, बोन आदि) को सेवा गर्ने भनेर कुनै सङ्घ, सङ्गठन, संस्था नेपालमा कार्यरत रहेको, तर उक्त सङ्घ, सङ्गठन, संस्थाको "जरो-किलो" अन्यत्रै रहेको, अवस्था छ भने नेपाली राष्ट्रियताको हित सुनिश्चित गर्न आवश्यकताअनुसार तिनीहरुको निराकरणका लागि पनि नेपालीजन तयार रहनु पर्छ ।

अर्थात्, अन्यत्रै "जरो-किलो" भएका पराइ शक्तिहरू जहाँकहिँ पनि छन्, तिनलाई पहिचान गरेर तिनको दुस्प्रभाव निर्मूल गर्नु अत्यावश्यक छ । हो, हितकारी चिजहरू हामीलाई उपयुक्त हुने गरी अवलम्बन गर्ने वैज्ञानिक दृष्टिकोण हामीमा हुनु पर्छ । राजनीति (शासनतन्त्रसहित) मात्र होइन; अर्थतन्त्र, शिक्षातन्त्र, स्वास्थ्यतन्त्र, कृषितन्त्र, संस्कृतितन्त्र, समाजतन्त्र आदि आदि सबैको जरो र किलो नेपालमै सुनिश्चित हुने रैथाने प्रणालीको सुनिश्चितताका लागि हो यो "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" -महाअभियान ।

**धर्मनिरपेक्षता** (Secularism) **बारे "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को दृष्टिकोण/मत के छ ?**

हामी "वैज्ञानिकतायुक्त धर्म एवं धार्मिकतायुक्त विज्ञान" को मान्यतामा विश्वास राख्छौं । संस्कृत शब्द "धर्म" लाई अङ्ग्रेजी शब्द "रिलिजन" (Religion) ले जनाउन सक्दैन र अङ्ग्रेजी शब्द सेकुलरिज्म (Secularism) को नेपाली भाषामा अनुवाद गर्दा "धर्मनिरपेक्षता" भनेर गरिनु नै ठूलो गल्ती थियो । नेपालीमा "धर्मनिरपेक्षता" भन्ने गरिएको जुन सेकुलरिज्म (Secularism) छ, त्यसको सैद्धान्तिक जरो युरोपेली इतिहासको एक कालखण्डमा रहेको छ । "धर्मनिरपेक्षता" एक मताग्रह (Ideology) हो, जुन युरोपको तत्कालीन परिस्थितिमा क्रिस्चियानिटी (इसाइयत) को आडमा पोपले चलाएको दबदबाका विरुद्धमा खडा भएको थियो । उक्त सेकुलरिज्म भनाउँदो मताग्रह युरोपबाट अन्यत्र

जहाँ जहाँ पनि फैलियो, त्यसले ती ठाउँहरुमा घृणा, वैमनस्य, हिंसालाई बढावा दिएर ठूल्ठूला हिंसात्मक दङ्गाहरु निम्त्याएको छ । वास्तवमा, धर्मनिरपेक्षता (Secularism) नेपालको लागि असान्दर्भिक त छँदैछ, यो अवाञ्छित मताग्रह हो ।

तसर्थ, "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले "धर्मनिरपेक्षता" को अवधारणा एवं मताग्रहलाई अस्वीकार गर्छ । वैदिक सनातन धर्म (जसलाई हिन्दू संज्ञा पनि दिने गरिएको छ) का साथै बौद्ध, किरात, बोन, जैन आदि जस्ता धर्म यहाँका मौलिक रैथाने हुन् । नेपालको पहिचान यहाँका मौलिक रैथाने धर्मबाट हुनु र राज्यले विशेष संरक्षण गर्नु शत-प्रतिशत ठीक हो भन्नेमा हामी दृढ छौं ।

**"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले नेपाल देश एवं नेपाली समाज बाहिरका सबै कुराहरु अस्वीकार गर्ने भनेको हो ?**

होइन । जसरी कुनै पनि रुखको जरो जहाँ गाडिएको हुन्छ, त्यो जरोसँग अविच्छिन्न जोडिइरहनु उक्त रुखको जीवनको निमित्त अनिवार्य आवश्यकता हो, तर रुखले आफूलाई आवश्यक पर्ने वायु तथा प्रकाशचाहिँ सबै दिशाबाट स्वीकार गर्नु पर्छ; उसरी नै हामीले पनि आवश्यकताअनुसार कैयौं कुराहरु पराइ स्रोतबाट समेत लिनु पर्ने अवस्था हुनु स्वाभाविक हो । हाम्रो "जरो" (मौलिकता) एवं "किलो" (निर्णायकत्व, प्रभुत्व, स्वाधीनता, स्वतन्त्रता, सार्वभौमसत्ता) माथि प्रतिकूल असर नपर्ने गरी, हितकारी कुराहरु जहाँकहिँबाट पनि स्वीकार गनु पर्ने हुन्छ र गर्नु पर्छ नै ।

"विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्ध" भनेर जुन आधारशिला चतुष्टयलाई "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले अवलम्बन गरेको छ, उक्त विश्वदृष्टिकोण (Worldview) बृहत् छ । हाम्रा क्रियाकलाप "विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्ध" अनुसार नै उदार, व्यापक, व्यावहारिक हुनै पर्छ ।

# वैज्ञानिक सत्ययुगको मार्गदर्शन

समाजमा, देशमा, संसारमा परिवर्तन ल्याउने हो भने सर्वप्रथम त सिद्धान्त (Theory), वाद (-ism), मताग्रह (Ideology), प्रतिमान (Paradigm), विश्वदृष्टिकोण (Worldview) को सङ्कथन, अभिनिर्माण एवं मूलप्रवाहीकरणमा ध्यान दिनु पर्छ ।

सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, विश्वदृष्टिकोण बारे थाहा हुनु प्रत्येक सचेत मानवका लागि आवश्यक छ ।

सैद्धान्तिक चिन्तन मानव जीवनको अपरिहार्य पक्ष हो ।

प्रत्येक व्यक्तिसँग एक सिद्धान्त हुन्छ, थाहा पाएर वा नपाएर ।

सिद्धान्त एक प्रकारले श्वास-प्रश्वासजस्तै अपरिहार्य मानव क्रियाकलाप हो ।

सिद्धान्तबाट स्वतन्त्र कुनै अवस्था हुँदैन । सबै दृष्टिकोणहरु सिद्धान्तबाट नै निःसृत हुन्छन् । यहाँसम्मकि 'सामान्य सुझबुझ' (कमनसेन्स) भनिनेचाहिँ कुरा पनि कुनै न कुनै सिद्धान्तमा आधारित हुन्छ ।

हाम्रा व्यवहारहरू सैद्धान्तिक चिन्तनबाट दिशोन्मुख हुन्छन् र गरिन्छन् तथा हाम्रा सिद्धान्तहरू प्रयोगका परम्पराबाट उब्जन्छन् ।

सिद्धान्त र व्यवहार अन्योन्याश्रित, अन्तर्सम्बन्धित, अन्तर्निभर छन् । राम्रो सिद्धान्तभन्दा बढी व्यावहारिक अरु केही हुनै सक्दैन ।

सिद्धान्तले हामी स्वयं र हाम्रो संसारलाई मूल्यवान् नयाँ तरिकाबाट हेर्न सिक्नका लागि मद्दत गर्न सक्छन् ।

प्रत्येक सिद्धान्तलाई त्यस्तो चस्माका रूपमा बुझ्न सकिन्छ, जसबाट संसारका केही निश्चित तत्वहरू केन्द्रमा ल्याइन्छन् भने अन्यचाहिँ स्वतः पृष्ठभागमा धकेलिन्छन् ।

विज्ञानको आधारभूत लक्ष्य नै सिद्धान्त हो ।

'वैज्ञानिक सत्ययुग' को सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, विश्वदृष्टिकोणको सङ्कथन एवं अभिनिर्माण हुँदै आएको छ । हालैका वर्षहरुमा सैद्धान्तिक मूलप्रवाहीकरण समेत प्रारम्भ गरिएको छ ।

'वैज्ञानिक सत्ययुग' को सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, विश्वदृष्टिकोणको सङ्कथन एवं अभिनिर्माणको कार्य अविच्छिन्न, अनवरत, निरन्तर अगाडि बढिरहेको छ र यसको क्रमशः मूलप्रवाहीकरण हुँदैछ ।

'वैज्ञानिक सत्ययुग' को उद्घोष हुनु युगान्तकारी एवं युगप्रवर्तनकारी परिघटना हो ।

युगान्तकारी एवं युगप्रवर्तनकारी परिस्थिति हाम्रो सामुन्ने छ ।

अहिले हाम्रो समाज तथा सारा विश्वमै जागरणको छनक पाइन्छ । विश्वभर देखिएका अशान्ति, युद्ध र बेचैनी मानवमा रहेको आन्तरिक उथल-पुथलको प्रकटीकरण हो ।

हरेक संक्रमण काल विशेष संभावनालाई पनि साथ लिएर आएको हुन्छ । अहिले नेपालको राष्ट्रिय परिस्थिति हेर्दा, भारतवर्षीय उपमहादेशको परिस्थिति हेर्दा, पूरै एशिया महादेश वा पूरै विश्वको पनि स्थिति हेर्दा एउटा गंभीर संक्रमणकालीन स्थिति देखिन्छ । युगको यो दोसाँधमा मानवसमुदायको इच्छाशक्तिले ठूलो परिवर्तन ल्याउन सक्ने स्थिति छ । जसरी प्रशस्त तातेको फलामलाई कुशलतापूर्वक आफूले चाहेको आकारमा ढाल्न सकिन्छ, त्यस्तै समाजलाई वाञ्छित स्वरुपमा परिवर्तन गर्ने यस्तै बेलामा हो । यस संक्रमणकालमा हामीले बुद्धि पुऱ्यायौँ भने यसअघि कहिल्यै हासिल नभएको उपलब्धि हासिल हुनेछ, तर उचित निर्णय लिन नसकेमा त्यसको दुस्परिणाम पनि मानवसमुदायले भोग्नुपर्नेछ ।

यो बाटो सजिलो छैन, पाइला-पाइलामा काँडाहरू छन् र पल-पलमा थुप्रै समस्यासँग जुध्नुपर्ने हुन सक्छ । यस्तो पनि हुन सक्छ कि समाजले सुरुमा त हामीलाई अस्वीकार नै गरिदिनपनि सक्छ । समाजले हामीलाई

आफ्नो मित्रका रूपमा चिन्न नभ्याउँदैको मौका छोपेर मानवताका शत्रुले हामीमाथिको आक्रमण तेज पार्न पनि सक्छन्। उनीहरू हामीलाई सिध्याउन अघि सर्नु बुझ्न सकिने कुरा नै हो । अँध्यारो हटाउन बत्ती बाल्न चाहने हामीजस्ता अभियन्ताप्रति निशाचरहरु दुश्मनभाव राख्छन् त के आश्चर्यको कुरा छ र !

तर, हामीले हार्नु हुँदैन । हो, केही समय हाम्रो हार भएजस्तो प्रतीत हुनसक्छ, हामीले कठिन भन्दा कठिन सङ्घर्ष गर्नु पर्नेछ । हामीमाथि घातक आक्रमण गर्न सक्छन् । कतिपय सहयात्रीहरू पथभ्रष्ट हुन पनि सक्ने संभावनारूपी खतरा पनि छँदैछ। तर सत्यपथका नयाँ यात्रीहरूले यो महान् यात्रालाई अगाडि बढाउने छन् । अन्धकारको घुम्टोभित्र पनि उज्यालोका आकांक्षीहरू अविरल प्रवाहित भइरहने छन् । अँध्यारो जतिसुकै गाढा किन नहोस्, आगोको एक फिलिङ्गो नै त्यसलाई परास्त गर्न सक्षम छ । हामी हिंडेको मूलबाटो छेकिन सक्छ, तर मेटिन सक्दैन । हिउँमा छाडेको पैतालाको डोबजस्तो यो होइन । हामी त हार्दै नहारिने, सुनिश्चित विजयको बाटोमा छौं ।

**विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक र सहृदयताको सम्बन्ध**को आधारशिला चतुष्टयले हामीलाई वैज्ञानिक सत्ययुगको लक्ष्यमा पुर्याउने सुनिश्चित छ ।

'वैज्ञानिक सत्ययुग' का उद्घोषकहरू ! युगान्तकारी एवं युगप्रवर्तनकारी अभियानमा जुटेका कार्यकर्ताहरू ! अमृतवृक्ष हुर्कदै गइरहेको छ र यो क्रम रोकिनेछैन । अन्ततोगत्वा 'वैज्ञानिक सत्ययुग' अवश्यम्भावी छ ।

नेपाल विश्वकै सर्वप्राचीन देशहरूमध्ये एक हो ।
यो महाभारतकाल भन्दा पनि पुरानो, रामायणकाल भन्दा पनि
पुरानो देश हो; राज्य–राष्ट्र (स्टेट–नेसन) हो । यसका सीमामा
परिवर्तन भएका छन्, शासकहरू परिवर्तन भएका छन्,
तर राज्यराष्ट्रका रूपमा यो अविच्छिन्न अस्तित्वमा
छ वैदिककालदेखि नै । हजारौं–हजारौं वर्षको इतिहास छ
नेपालको सार्वभौमसत्ता, स्वतन्त्रता, स्वाधीनताको ।
हिमाल, पहाड, तराइ मधेस नेपालका अवयवका
रूपमा रहेका छन् जहिले पनि ।

**विज्ञानको बृद्धि प्रविधिको प्रगति ।**
**धर्मको विवेक सहृदयताको सम्बन्ध ।।**
**विकास न्याय स्वाधीनता समृद्धिमा नेपालको ।**
**सहृदयी तराइ मधेश पहाड र हिमालको ।।**

---

## जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति
## (The Root and Locus Movement)

---


वेबसाइट : jarokilo.org
adhikary.wordpress.com
फेसबुक : https://www.facebook.com/rootandlocus/
ट्वीटर : https://twitter.com/JaroKilo